यदि यस अनुवादित कागजात र अंग्रेजी/चिनियाँ संस्करण बीच कुनै भिन्नता भएमा वा बाझिएको खण्डमा अंग्रेजी/चिनियाँ संस्करण मान्य हुनेछ।

# अटोमेटेड टेलर मेशिन (ATM मेशिन) हरू प्रयोग गर्ने स्मार्ट सुझावहरू

## ATM प्रयोग गर्ने सम्बन्धमा मुख्य सुरक्षा सुझावहरू

**ATM कार्ड तथा पासवार्डहरू** – आफ्नो कार्ड सुरक्षितसँग राख्नुहोस्। अनुमान लगाउन कठिन र अन्य सेवाहरूको पासवर्डभन्दा फरक पासवार्ड सेट गर्नुहोस्। आफ्नो पासवर्डलाई नियमित रूपमा परिवर्तन गर्नुहोस्। आफ्नो ATM कार्ड र पासवार्डलाई सँगसँगै नराख्नुहोस्। बैंकहरूले फोन वा इमेलमार्फत कुनै पनि संवेदनशील (गोप्य) व्यक्तिगत जानकारी (पासवर्ड लगायत) माग्ने गर्दैनन्।

**ATM** – कार्ड छिराउने स्लट, किप्याड र किप्याड कभरको आसपास कुनै असामान्य कुराहरू (उदाहरणका लागि, कुनै शंकास्पद उपकरण जडान गरिएको छ, छैन) भए, नभएकोमा सावधान रहनुहोस्। आफ्नो पासवर्ड प्रविष्ट गर्दा किप्याडलाई आफ्नो हातले छेक्नुहोस् र तपाईंको पासवर्ड कसैले हेर्न खोज्दै छ कि भन्ने कुरामा ध्यान दिनुहोस्।

**झिकेको नगदलाई सम्हाल्ने** – नगद झिकिसकेपछि तुरुन्तै पैसा गन्नुहोस्। क्यास डिस्पेंसरमा अरू कसैको छोडिएको पैसा (नोट) वा कार्ड घुसाउने स्लटमा अरू कसैको छुटेको ATM कार्ड नलैजानुहोस्। नोटहरू वा ATM कार्डलाई ATM मेशिनमा स्वचालित रूपमा फिर्ता जान दिनुहोस्।

**विदेशमा नगद झिक्ने** – तपाईंले विदेशको ATM बाट पैसा झिक्ने सुविधालाई पहिले नै सक्रिय गराउनुपर्छ र ATM बाट झिक्न सकिने पैसाको सीमा र सक्रिय अवधि (लागू हुने अवधि) लाई सावधानीपूर्वक तय गर्नुपर्छ।

**बैंकबाट पठाइएका सन्देशहरू** –तपाईंको बैंकले उपलब्ध गराएको कारोबारको रेकर्डहरूलाई समयमा नै जाँच गर्नुहोस्। यदि तपाईंले आफ्नो ATM कार्ड हराउनु भएमा वा रकम जतिसुकै भएतापनि कुनै पनि शंकास्पद कारोबार वा अवस्थाहरू भएमा तुरुन्तै आफ्नो बैंकलाई जानकारी गराउनुहोस्।

**रकम ट्रान्सफर** – रकम ट्रान्सफर निर्देशनलाई पुष्टि गर्नुअघि ट्रान्सफर गरिने व्यक्तिको खाता नम्बर र ट्रान्सफर गरिने रकम सावधानीपूर्वक ठिक छ कि छैन भनेर रुजु गर्नुहोस्। गल्तीले कुनै गलत खातामा ट्रान्सफर भएको खण्डमा जतिसक्दो चाँडो सहयोगका लागि बैंकलाई सम्पर्क गर्नुहोस्। यद्यपि, बैंकले ट्रान्सफर गरिएको व्यक्तिको सहमति पाएपछि मात्र रकमलाई फिर्ता ट्रान्सफर गर्नसक्छ। यदि ट्रान्सफर गरिएको व्यक्तिले सहयोग गर्दैन वा रकम फिर्ता गर्न अस्वीकार गर्छ भने ट्रान्सफर गर्ने व्यक्तिले प्रहरीमा रिपोर्ट गर्ने बारेमा विचार गर्नुपर्छ।

हङकङ मनेटरी अथोरिटी (हङकङ मौद्रिक प्राधिकरण)
वेबसाइट: www.hkma.gov.hk
टेलिफोन: 2878 8196
युट्युब: HKMA
फेसबुक: HKMAGOVHK
इन्स्टाग्राम: HKMAGOVHK

आभार: The Hong Kong Association of Banks